सामाजिक परिवर्तनका लागि

# सहजीकरण

किन र कसरी ?

सहयोगी पुस्तिका

कमल फुयाल

## लेखकको भनाई

सामाजिक परिवर्तन कार्यलाई प्रभावकारी ढंगले अगाडि बढाउन यस प्रक्रियामा संलग्न सहजकर्ताको भूमिका अत्यन्तै महत्वपूर्ण हुन्छ । सामाजिक परिवर्तनका सम्बन्धमा भन्नुपर्दा सहजकर्ताले लिएको अवधारणा, सामाजिक विकासप्रति उसको प्रतिवद्धता, सामाजिक विकास प्रक्रियामा सबै वर्ग, जात, उमेर समूह, लिंग, भाषाभाषीहरूलाई सक्रिय रुपमा सहभागी गराउन सक्ने उसको सीपले सामाजिक परिवर्तन प्रयासको परिणाम निर्भर हुन्छ । त्यसैले पनि 'सामाजिक परिवर्तनको लागि सहजीकरण' आफैमा अत्यन्तै महत्वपूर्ण विषय हो । यससम्बन्धी थुप्रै वहस अनि व्यवहारिक अभ्यासहरूको आवश्यकता छ ।

यिनै आवश्यकतालाई ध्यानमा राखी सहजीकरण विषयमाथि छलफल गर्न सहयोग पुगोस् भन्ने उद्देश्यले यस पाठ्य सामग्री तयार पारिएको हो । निश्चय पनि यस सामग्रीमा थुप्रै कमीहरू छन् । सहजीकरण विषयमाथि गरिने अन्तरक्रिया तथा अभ्यासका क्रममा भएका सिकाईहरूलाई समावेस गरी यस सामग्रीलाई पुनरमार्जन गर्दै लगिनेछ । यसमा देखिएका कमी कमजोरीहरूलाई औंल्याई दिनका लागि अनुरोध गर्दछु ।

कमल फुयाल
kamal.phuyal@gmail.com

## सहजीकरणसँग सम्बन्धित केही अंग्रेजी शब्दावलीहरूको नेपाली अनुवाद

यस पुस्तिकामा प्रयोग गरिएका शब्दावलीहरुको अंग्रेजी स्वरुप

| | |
|---|---|
| Participation | सहभागिता |
| Participatory development | सहभागितामूलक विकास |
| Participatory tools | सहभागितामूलक विधिहरु |
| Participatory rural appraisal | सहभागितामूलक ग्रामीण लेखाजोखा |
| Participatory learning and action | सहभागितामूलक सिकाई तथा कार्य |
| Participatory project cycle | सहभागितामूलक परियोजना चक्र |
| Development approach | विकास पद्धति |
| Right based approach | अधिकारमूखि (विकास) पद्धति |
| Alternative development approach | वैकल्पिक विकास पद्धति |
| Social change | सामाजिक परिवर्तन |
| Social transformation | सामाजिक रुपान्तरण |
| Socialization process | सामाजिकीकरण प्रक्रिया |
| Social issues | सामाजिक सवालहरु |
| Facilitation | सहजीकरण |
| Facilitator | सहजकर्ता |
| Stakeholder | सरोकारवाला |
| Conflict management | द्वन्द व्यवस्थापन |
| Marginalised group | उपेक्षित समूह |
| Diversity | विविधता/विभिन्नता |
| Discrimination | विभेद/असमानता |

## सहजीकरणसम्बन्धी केही महत्वपूर्ण सवालहरु

सामाजिक परिवर्तनका लागि कार्यरत सहजकर्ता निम्न प्रश्नहरुबारे सचेत हुनै पर्दछ :

१. विकासलाई कसरी परिभाषित गर्नु हुन्छ ?

२. सामाजिक परिवर्तन के हो ? र, सामाजिक रुपान्तरणलाई कसरी बुझ्नुहुन्छ ?

३. जनसहभागिता के हो ? सहभागितामूलक विकास प्रक्रिया के हो ?

४. समाजमा विद्यमान विविधताहरु के-के छन् ?

५. समाजमा क-कस्ता विभेदहरु छन् ?

६. हालको विकास प्रक्रियाबाट को-को वञ्चित छन् ? र, उक्त वञ्चितिकरणका कारणहरु के हुन् ?

७. सामाजिक विकास प्रक्रियामा उपेक्षित वर्गको सहभागिताका लागि के गर्न सकिन्छ ?

८. सहजीकरण के हो ?

९. सहजीकरणको आवश्यकता किन पर्दछ ? केका लागि सहजीकरण ?

१०. सहजीकरण प्रक्रिया कस्तो हुनु पर्दछ ?

११. सहजीकरणका लागि प्रयोग गर्न सकिने विधिहरु कुनकुन हुन् ?

१२. सहजकर्ता को हुन् ?

१३. सामाजिक विकासका लागि सहजकर्ताको भूमिका कस्तो हुन्छ ?

१४. प्रभावकारी सहजकर्ता हुनका लागि के-कस्ता गुणहरुको आवश्यकता पर्दछ ?

१५. सहभागितामूलक अभ्यासलाई सहजीकरण गर्दा सहजकर्ताले ध्यान दिनुपर्ने कुराहरु के-के हुन् ?

## विषयसूचि

# १. सहभागितामूलक विकास प्रक्रिया

## १.१ विकासबारे

गरिबी र विकासको वहस कहिले सुरु भयो होला भनेर अनुमान गर्न कठीन पर्दछ । गरिबी र विकासबारे अनगिन्ति पुस्तकहरु लेखिएका छन् । तर, गरिबीको सर्वमान्य परिभाषा र विकासको निर्दिष्ट उपाय कतै कहिँ भेटिँदैन र यो सम्भव हुने कुरो पनि भएन ।

सन् १९४९ जनवरी २० तारिखका दिन तत्कालिन अमेरिकी राष्ट्रपति ट्रयूम्यान (Harry Truman)ले राष्ट्रपतिको जिम्मेवारी ग्रहण गरेको कार्यक्रममा दिएको भाषणमार्फत् विश्वलाई विकसित र अल्पविकसित मुलुकका रुपमा विभाजन गरे र विश्वका अल्पविकसित मुलुकहरुको विकास गर्ने संयुक्त राज्य अमेरिकाको योजनालाई सहयोग गर्न सबैलाई आव्ह्वान पनि गरे । उनले विकासको लागि प्रस्तुत आफ्नो योजनामा कुनै पनि प्रकारको साम्राज्यवाद र नाफा कमाउने चाहना नभएको, बरु प्रजातान्त्रिक मान्यताका आधारमा अल्पविकसित मुलुकहरुलाई वैज्ञानिक ज्ञान र प्रविधि अनि पर्याप्त आर्थिक लगानीसहितको सहयोग गरी ती मुलुकहरुको विकास गर्नु पर्ने अवधारणा पेश गरे[1] । यसरी 'विकास'को नयाँ अर्थको प्रारम्भ भयो जुन अवधारणाले हालसम्म नै अधिकांश विकासे संस्थाहरुलाई 'दिशा-निर्देश' गरिराखेको छ । यसरी प्रारम्भ भएको विकास अवधारणामाथि विश्वमा थुप्रै छलफल भएका छन् र अनगिन्ति टिप्पणी पनि गरिएका छन् ।

वर्तमान समयमा नेपालमा पनि 'विकास' विषयमाथि व्यापक वहस हुने गरेको छ । सरकारले सामुदायिक विकासको लागि वर्षेनी अरबौँ रुपैयाँ खर्च गर्दछ । त्यस्तै, गैरसरकारी संस्थाहरुले पनि वार्षिक रुपमा सात अरब भन्दा बढी रकम खर्च गर्दछन्[2] । सामाजिक विकास विषयमा दिनहुँजसो नै सभा, सेमिनार, गोष्ठी, भेला हुने गर्दछन् । सरकारी निकाय, गैरसरकारी संस्था, व्यापार, पत्रकारिता आदि सबै क्षेत्रहरूमा विकासबारे थुप्रै वहसहरू हुने गर्दछन् । तर, विकासका व्याख्याहरू भने फरक फरक ढंगले हुने गरेको भेटिन्छ । धेरैजसो व्याख्याहरुले माथि उल्लेख गरिएझैं "गरिब मुलुकहरुको विकासका लागि धनी मुलुकहरुले प्रविधि र आर्थिक लगानीसहित सहयोग गर्नु पर्दछ" भन्ने मान्यता बोकेको देखिन्छ । यसको वैकल्पिक व्याख्याले भने 'विकास

[1] E. Gustabo, Development, *In* The Development Dictitionary, edited by Wolfgang Sachs, 1997.
[2] कान्तिपुर दैनिक, चैत्र २३, २०६३

सम्वन्धित समूह, जातिविशेषको संस्कृतिअनुरुप हुनु पर्दछ, बाहिरको संस्कृति हावि हुनु हुँदैन - त्यसैले विकासको परिभाषा सम्वन्धित समुदायले नै गर्न पाउनु पर्दछ' भन्ने मान्यता राख्दछ । साथै, यस व्याख्याले स्थानीय सीप र ज्ञानको प्रयोगलाई पहिलो प्राथमिकता दिन्छ । बाहिरी व्यक्तिहरुले स्थानीय समुदायको लागि विकासको लागि निर्णय गरिदिने नभई सहजीकरण मात्र गर्नु पर्दछ भन्ने मान्यता राख्दछ वैकल्पिक विकास व्याख्याले । र, सबैभन्दा महत्वपूर्ण कुरा यस व्याख्याले 'विकास भनेको भौतिक पूर्वाधारको निर्माण मात्र नभई सिंगो सामाजिक परिवर्तन हो' भन्ने कुरालाई विशेष जोड दिन्छ । सामाजिक परिवर्तन भनेको हाल विद्यमान शक्ति संरचनामा परिवर्तन आउनु हो । हालको विभेदपूर्ण सामाजिक संरचनामा परिवर्तन आउनु नै सामाजिक विकासको गति अघि बढ्नु हो ।

सामाजिक विकासको काम नेपालमा कहिलेदेखि आरम्भ भयो भन्ने सवालमा थुप्रै व्याख्याहरू गरिएका छन् । यस सम्बन्धमा 'सामाजिक विकासको विवेचना' नामक पुस्तकका रचनाकार गोबिन्द न्यौपाने[3] लेख्नुहुन्छ :

> *नेपालमा सामाजिक कामको आरम्भ इतिहासको उषाकालदेखि नै भएपनि प्रामाणिक रुपमा चाहिँ ई.सं. ४६४ मा काठमाडौको एउटा मन्दिरका लागि लिच्छवी राजा मानदेवले गुठीको रुपमा जग्गादान गरेको घटनाबाट सुरु भएको पाइन्छ । विभिन्न सामाजिक आवश्यकतालाई पूरा गर्ने क्रममा बनेका 'गुठी', 'सिठी', 'भेजा', 'नाङखुर', 'चुम्लुङ', 'नोगार', 'खेल' आदि जस्ता संस्था एवं प्रचलनहरूले सामाजिक विकासका त्यस कालका आरम्भिक कामहरू सम्पन्न गरे । ......... आधुनिक मान्यताको हिसाबले सामाजिक विकासको संस्थागत सुरुवात गर्ने काम ई.सं. १८९५ मा पोखरामा "आर्य समाज" को स्थापना गरेर माधवराज जोशीले गरेका थिए । सन् १८९६ मा यो संस्था काठमाडौमा सारियो । ........ गान्धीको बिचार र सिद्धान्तबाट प्रभावित भएर ई.सं. १९२६ मा तुलसीमेहर श्रेष्ठले "नेपाल चर्खा प्रचारक गान्धी स्मारक महागुठी" को स्थापना गरे । घरेलु उद्योगलाई प्रोत्साहित गर्नु र असहायहरूको सेवा गर्नु नै यसका उद्देश्यहरू थिए । ई.सं. १९३७ मा काठमाडौका केही शिक्षित युवाहरूले महावीर स्कूलको स्थापना गरे जसको उद्देश्य आधुनिक किसिमको शिक्षा प्रदान गर्नु थियो । यो विद्यालयमा संलग्न रहेका २८ जना व्यक्तिहरूलाई राणाहरूले पक्राउ गरे । ........ ई.सं. १९४७ मा "परोपकार औषधालय" खोल्न स्वीकृति प्राप्त भयो । पछि सेवाहरू थप्दै गएर ई.सं. १९५२ मा यसलाई "परोपकार संस्था"को रुपमा नामाकरण गरियो ।*

नेपालमा भएका सामाजिक विकास कार्यहरूको इतिहास हेर्दा यी कार्यहरू मुलतः सामाजिक सुधारका लागि, चेतना अभिवृद्धिका लागि, सीप विकास गरी आयवृद्धि गर्नका

[3] गोबिन्द न्यैपाने, सामाजिक विकासको विवेचना, सन् १९९९ (पेज : ३-४)

लागि र अन्य सामाजिक कल्याणका लागि भएको पाइन्छ । सन् १९५० पछि भने यस्ता कल्याणकारी कार्यहरूमा शिथिलता आएको देखिन्छ ।

सन् १९७० पश्चात् भने विदेशबाट सहायत प्राप्त गरेर सामुदायिक विकास गर्ने कार्यमा विस्तार भएको देखिन्छ । यस अवधिमा विभिन्न गैरसरकारी संस्थाहरू गठन भई ती संस्थाहरूले विभिन्न समुदायमा विभिन्न क्षेत्रमा विकास कार्यक्रमहरू सञ्चालन गरेको भेटिन्छ । तापनि, यस अवधिमा, पञ्चायत कालमा सामाजिक परिवर्तनको उद्देश्य राख्ने कार्यहरूलाई भने निषेध गरिएको थियो । सन् १९७७ मा "सामाजिक सेवा राष्ट्रिय समन्वय परिषद्" स्थापना गरी तत्कालिन सरकारद्वारा सामुदायिक विकास कार्यक्रम गर्ने गैरसरकारी संस्थाहरूलाई यसै संस्थामा आवद्ध गराइयो ।

सन् १९९० मा भएको जनआन्दोलनपश्चात् सामुदायिक विकास क्षेत्रमा गरिने लगानीमा वृहत विस्तार भयो । यस अवधिमा मुलतः मानव अधिकार, बाल विकास, महिला जागरण आदि क्षेत्रमा कार्य गर्ने थुप्रै संस्थाहरू सक्रिय भए । विशेषगरी विकासलाई सामाजिक रुपान्तरणका लागि आवश्यक आन्दोलन (मुभमेन्ट) का रुपमा लिई यस कार्यलाई अगाडि बढाउने अवधारणाका रुपमा लिने संस्थाहरू पनि देखिए भने विकासलाई सामाजिक सेवाका रुपमा अगाडि बढाउने संस्थाहरू पनि थिए ।

मुलतः विकासलाई दुई तरिकाले व्याख्या गर्ने गरेको भेटिन्छ । पहिलो व्याख्याले समुदायमा गरिने सेवा वा सुधारका कुरामा जोड दिन्छ भने दोस्रो व्याख्याले सामाजिक रुपान्तरणको कुरालाई महत्व दिन्छ । यी दुई एकआपसका विरोधी व्याख्याहरू भने होइनन् । तर, सामाजिक रुपान्तरणका लागि विकास कार्यक्रम गर्ने भन्ने हो भने अविकासको विश्लेषण पनि सोहीअनुरुप हुनु पर्दछ र विकास कार्यक्रमहरूको योजना तर्जुमा पनि रुपान्तरणमुखि नै हुनु पर्दछ । यस पछाडिको टेबुल (स्रोतः ट्रेनीङ फर ट्रान्सफरमेसन, भाग २) ले ती दुई विकास व्याख्याहरूलाई स्पष्ट पार्दछ ।

## विकास व्याख्या

| | अविकास वा गरिबीका कारणहरू | विकास प्रक्रियाको व्याख्या | विकास कार्यक्रमका आधारहरू | विकास कार्यक्रमहरू | विकास कार्यकर्ताको भूमिका |
|---|---|---|---|---|---|
| पहिलो व्याख्या | - पछौटेपन<br>- अज्ञानता<br>- न्यून स्तर<br>- स्रोतको अभाव<br>- भौतिक पूर्वाधारको अभाव<br>- आधुनिक प्रविधिको कमी | - आधुनिकीकरण<br>- 'विकसित' देशको अनुशरण<br>- नविन ज्ञान तथा प्रविधिको उपयोग<br>- बाहिरी संसारसँगको सम्पर्क<br>- बाहिरको प्रविधि र कोषको उपयोग | - नविन प्रविधि भित्र्याउने<br>- ज्ञान वृद्धिमा जोड<br>- प्राविधिक सीपमूलक तालिम<br>- भौतिक निर्माणमा लगानी<br>- प्राविधिक सल्लाहकारहरूको प्रयोग<br>- नविन संस्था निर्माणमा जोड<br>- योजनाविद्द्वारा योजना तर्जुमा | - भौतिक निर्माण कार्यक्रम<br>- बाटो बिजुली स्थापना<br>- अत्याधुनिक कृषि प्रणाली<br>- रसायनिक मल, वीउवीजन तथा औषधि<br>- व्यावशायिक शिक्षा | - विकासविद्, योजनाकार<br>- विकास वाहक<br>- नीति निर्माणकर्ता<br>- दक्ष विकास सल्लाहकार<br>- गरिबी निवारणकर्ता<br>- जनताका लागि काम गर्ने<br>- कोष वाहक |
| दोस्रो व्याख्या | - असमान शक्ति सम्बन्ध<br>- शक्ति र स्रोतको असमान वितरण<br>- परनिर्भरता<br>- सामाजिक अन्याय<br>- शोषण, आदि | - सामाजिक विश्लेषण<br>- शक्ति र स्रोतको पुन: वितरण<br>- सामाजिक न्याय प्रणाली<br>- संगठित समाज<br>- अशक्तहरूको सशक्तिकरण<br>- सामाजिक संरचनामा परिवर्तन | - जनता स्वयंले आफ्नो समस्याको पहिचान गर्ने<br>- विविध सवालहरूमा समुदायले आफूलाई संगठित गर्ने<br>- योजना र नीति निर्माण प्रक्रियामा जनताहरूको सक्रिय भूमिका<br>- जनता र शक्ति केन्द्रको सम्बन्धमा जोड<br>- स्थानीय स्रोत परिचालनमा जोड | - सामाजिक चेतनाको अभिवृद्धि<br>- अनौपचारिक शिक्षा (खासगरी राजनैतिक)<br>- सामुदायिक संगठनहरूको उत्थान (जस्तो सहकारी)<br>- व्यावसायिक संगठनको निर्माण (किसान संगठन आदि)<br>- मानव अधिकार-सुनिश्चितता<br>- स्थानीय अवस्थानुसारको कार्यक्रम निर्माण | - सहजकर्ता वा सहयोगी कार्यकर्ता<br>- जनतासँग सहकार्य गर्ने<br>- परिवर्तनका लागि सहयोगी<br>- संगठनकर्ता |

विकास गर्न भनेर स्थापना भएका स्थानीय वा बाहिरबाट आएका विकास संस्थाहरूले सामाजिक विकासका लागि अर्थ, मानवस्रोत, ज्ञान, सीप आदि कुराको लगानी गरिरहेका छन् । यसले सामाजिक परिवर्तनका लागि सकारात्मक प्रभाव पनि पारेको छ । मुलतः ती विकास संस्थाहरूले गरेका विविध क्रियाकलापबाट पारेको प्रभावहरूलाई यसरी प्रस्तुत गर्न सकिन्छ :

- जनताहरूको शिक्षास्तरमा वृद्धि (दुबै औपचारिक, अनौपचारिक) ।
- जनताहरूको आयमा वृद्धि (विभिन्न सीपमूलक र आयवृद्धि कार्यक्रमबाट) ।
- सामूहिक भावना र कार्यमा वृद्धि (विभिन्न समूहहरूको निर्माणमार्फत) ।
- वचत गर्ने बानीमा सकारात्मक परिवर्तन ।
- भौतिक निर्माण ।
- विकास कार्यमा लाग्नु पर्छ भन्ने भावनामा वृद्धि ।
- मानव अधिकारसम्बन्धी सेचतना वृद्धि । आदि ।

सामाजिक आन्दोलनलाई नै मुल लक्ष बनाएका कतिपय संस्थाहरूले नेपालको प्रजातान्त्रिक आन्दोलनलाई सशक्त बनाउन पनि प्रतक्ष्य वा परोक्ष रुपमा योगदान पुऱ्याएका छन् । तर, सबै विकास संस्थाहरूले राम्रो काम नै गरिरहेका छन् भन्ने पनि होइन । विकासको नाममा समाजलाई अविकासतर्फ धकेल्ने काम पनि भइरहेको छ । जनताको लागि विकास गर्ने भनेर दावि गर्ने संस्थाहरूले आफ्ना स्वार्थ्यहरूलाई जनतामा लाद्ने काम पनि गर्ने गरेका छन् । यस सम्बन्धमा नेपालमा लामो समयसम्म बसी नेपाली समाज र नेपालमा भएगरेका विकास कार्यहरूलाई गहिरोसँग नियालेका एक मानवशास्त्री ताचुरो फुजिकुरा[4] लेख्नुहुन्छ :

> *कुनै निश्चित समयमा निश्चित विकासे कार्यक्रमको लक्षित समूह बनाइएका अधिकांश गाउँले, बालबालिका, महिला अथवा सहरी गरिबहरूलाई कुन प्रक्रियाद्वारा अथवा किन उनीहरू सो कार्यक्रमबाट 'लाभान्वित' हुने वर्गको रुपमा छनौट भएका हुन् भन्ने जानकारी हुँदैन । यसरी रहस्यमय ढंगले चुनिएका 'लाभान्वित' वर्गलाई 'स्वावलम्बनका लागि सहायता' कार्यक्रममा सक्रिय सहभागिताका लागि आग्रह गरिन्छ । ..... कार्यक्रमको अवधि पनि लाभान्वित हुने भनिएका वर्गले होइन दाताहरूले निर्णय गर्छन् । दुई अथवा पाँच वर्षपछि आयोजनामा सदस्यहरू जसरी देखा परेका थिए उस्तै अकस्मात र रहस्यमय ढंगले हराउँछन् ।*

यस्ता संस्थाहरूले विकासको नारालाई 'आफ्नै विकास'को लागि उपयोग गरेको भन्ने गुनासो यत्रतत्र सुनिन्छ । यस्ता संस्थाहरू कसरी 'दाताबाट रकम ल्याउने' भन्ने कुरालाई नै विशेष जोड दिने गर्दछन् । दाताहरुबाट कसरी रकम ल्याइन्छ ? कति रकम ल्याइन्छ ? रकम कहाँ कसरी खर्च गरिन्छ ? भन्ने कुराहरु पनि पारदर्शी हुँदैनन् । यस्ता

[4] एइची सादामाचु, सामाजिक अभियान या विकास सहायता : गैससको भूमिकामाथि प्रश्न

संस्थाहरुले गर्ने 'विकास'बाट समाजमा पारेको नकारात्मक प्रभावलाई यसरी देखाउन सकिन्छ :

- समाजमा स्वतस्फूर्त रुपमा हुने गरेका सामाजिक कामहरूलाई निरुत्साहन गरिरहेको ।
- विकासका लागि समुदाय स्वयंले केही गर्न सक्दैनन्, विकासका लागि बाहिरी संस्थाहरू नै चाहिन्छ भन्ने धारणालाई स्थापित गरिरहेको ।
- समुदायमा विकासका लागि 'माग्ने प्रवृत्ति'को विकास ।
- पश्चिमा संस्कृति नै विकासको उत्तम मोडेल हो भन्ने मान्यतालाई स्थापित गर्दै गरेको ।
- स्थानीय ज्ञान, सीप र स्रोतहरूको मतलब नराखी बाहिरको स्रोत ल्याउने कुरामा जोड दिइएको ।
- हुने र नहुनेबीचको खाडलमा वृद्धि । आदि ।

विकास अवधारणाका सम्बन्धमा बाहिरी संस्था तथा व्यक्तिहरूले विभिन्न विकास अवधारणालाई समाजमा लागु गरे (लगभग १९७० सम्म) । तर, यसले समाजमा खासै परिवर्तन ल्याउन सकेन । त्यसपछि वास्तविक सामाजिक परिवर्तन हुनु पर्दछ भन्ने मान्यता राख्नेहरूले विकासका लागि वैकल्पिक अवधारणाको खोजी गर्ने कार्य गरे । त्यसै प्रयासअनुरुप विभिन्न मोडेलहरूको विकास गरियो । यसैक्रममा सहभागितामूलक विकास, अधिकारमूखि पद्धति, सामाजिक समावेसीकरण आदि अवधारणाहरूको उपयोग हुँदै आएको छ ।



## १.२ सहभागिता र सहभागितामूलक पद्दति

वर्तमान समयमा राजनीति, सरकारी तथा गैरसरकारी लगायत विभिन्न क्षेत्रमा ज्यादा प्रयोगमा आउने शब्दहरूमा सहभागिता पनि पर्दछ । राजनैतिक विषयमा हुने भाषणहरूमा, सरकारी तथा गैरकारी संस्थाहरूद्वारा आयोजित गोष्ठी तथा सभा सेमीनारहरूमा, विभिन्न विषयमा हुने तालिम कार्यक्रमहरूमा, भेला तथा बैठकहरूमा 'सहभागिता' शब्द अनेकौपटक दोहोऱ्याइन्छन् । साथै, सहभागितालाई नै मूल विषयवस्तु बनाएर गरिने गोष्ठी तथा तालिमहरू पनि सयौं हुन्छन् । सहभागितामूलक योजना तर्जुमा - सहभागितामूलक अनुगमन तथा मूल्यांकन - सहभागितामूलक सरसफाई कार्यक्रम - सहभागितामूलक वन विकास - जेण्डर विश्लेषणमा उपेक्षित महिलाहरूको सहभागिता - चेतना जागरण कार्यक्रममा दलितहरूको सहभागिता - राष्ट्र उत्थानमा नागरिक समाजको सहभागिता - आदि इत्यादि । यसले पनि सहभागिता विषयमाथि हुने छलफलको परिमाणलाई प्रस्तुत गर्दछ र विकासमा जनसहभागिताको महत्व रहेछ भन्ने देखाउँछ ।

सहभागिता शब्दको प्रयोग अत्यधिक भए तापनि यसको व्याख्यामा विविधता देखिन्छ । संलग्नता, साथसाथ भाग लिने (कार्यक्रममा), सहकार्य, सामुहिक कार्यक्रम, मिलेर कार्य गर्ने, छलफल तथा अन्तरक्रिया, सामूहिक निर्णय तथा सामूहिक कार्य सञ्चालन, आदि रुपमा सहभागितालाई ब्याख्या गर्ने गरेको भेटिन्छ । नेपाली वृहत शब्दकोषले सहभागितालाई "सहभागी हुनाको भाव; कुनै काम कुरामा अरुका साथै भाग लिने वा सहभागी भएर काम गर्ने प्रक्रिया वा अवस्था, साथै अरुका साथ मिलेर काम गर्ने अवसर वा अधिकार" को रुपमा व्याख्या गरेको छ ।

के भयो भने सहभागिता भयो भनेर मान्ने ? यस सम्बन्धमा भएका विभिन्न छलफल कार्यक्रमहरुका अनुसार 'सम्बन्धित व्यक्तिहरूको छलफल तथा अन्तरक्रियामा संलग्नता, सामूहिक भावनालाई संगेट्ने निर्णय, कार्यमा सबैको सहभागिता, अर्काको बिचारलाई आदर, सकारात्मक प्रवृत्ति, कार्यको प्रतिफलको सम्बन्धित व्यक्तिहरूबीच समानुपातिक वितरण नै सहभागिताका विशेषताहरू हुन्' । सहभागितामूलक प्रक्रियामा जातिय तथा कुनै पनि भेदभाव हुनु हुँदैन । कुनै पनि प्रकारको भेदभावले सहभागिताको मूल मर्मलाई प्रहार गर्दछ र सहभागिता भयो भनेर मान्ने स्थिति रहँदैन ।

सरकारी तथा गैरसरकारी क्षेत्रका प्राय सबै संस्थाहरूले विकास प्रक्रियाका सवालमा आफ्नो उद्देश्य सहभागितामूलक रुपमा विकास कार्यक्रमहरू सञ्चालन गर्नु रहेको कुरा व्यक्त गर्दछन् । गैरसरकारी क्षेत्रमा त यस शब्दको प्रयोग झनै व्यापक छ । माथि

उल्लेखित सहभागितालाई नै मुल मुद्धा बनाएर गरिने गोष्ठी, सेमीनारहरू प्राय गैरसरकारी संस्थाहरुकै आयोजनामा हुने गर्दछन् ।

विकास प्रक्रियामा स्थानीय जनताहरुको सहभागिता जुटाउन विभिन्न पद्धतिहरूको प्रयोग गरिएको भेटिन्छ । उदाहरणको लागि सहभागितामूलक ग्रामीण लेखाजोखा (PRA), सहभागितामूलक कार्य तथा सिकाई विधि (PALM), सहभागितामूलक कार्यगत अनुसन्धान (PAR), सहभागितामूलक सिकाई तथा कार्य (PLA), आदि । सामुदायिक विकास क्षेत्रमा कार्यरत धेरैजसो गैरसरकारी संस्थाहरुले यस्ता पद्धतिहरुको प्रयोग गर्ने गरेका छन् । त्यस्तै, खासगरी समुदायसँग प्रत्यक्ष कार्य गर्ने सरकारी संस्थाहरुले पनि यी पद्धतिहरुको उपयोग गर्न थालेका छन् । गैरसरकारी क्षेत्रमा विशेष गरी जलाधार विकास कार्यक्रम, सामुदायिक वन विकास कार्यक्रम, वचत समूह तथा आयवृद्धि कार्यक्रम, अनौपचारिक शिक्षा कार्यक्रम, पोषण विकास कार्यक्रम, प्रजनन स्वास्य, जीविकोपार्जन विकास कार्यक्रम, सामुदायिक कार्य कार्यक्रम, पार्क एण्ड पिपुल कार्यक्रम, लागतय विभिन्न कार्यक्रमहरू स्थानीय समुदायको सक्रिय सहभागिता सम्पन्न गर्न विविध सहभागितामूलक विधि तथा पद्धतिहरूको प्रयोग भइरहेको भेटिन्छ ।

जनसहभागितालाई विभिन्न व्यक्ति तथा संस्थाहरूले गरेको व्याख्याहरूमा केही भिन्नता पनि देखिन्छन् । संयुक्त राष्ट्रसंघको साधारण सभाले सन् १९८६ मा 'विकासमा अधिकार सम्वन्धी घोषणा' लाई आत्मसात गर्‍यो । उक्त घोषणाको धारा १ ले 'विकासका लागि योगदान गर्नु, आर्थिक, सामाजिक, सांस्कृतिक र राजनैतिक विकासलाई उपभोग गर्न' जनताले पाउने कुराको उल्लेख गर्दछ । यो धाराले 'विकासका सवालमा स्वनिर्णय गर्न पाउनु जनताहरूको अधिकार हो' भन्ने उल्लेख गर्दछ । साथै, उक्त घोषणपत्रले महिलाहरूका सवालमा विशेष सरोकार राख्दछ । यसको धारा ८ ले 'विकास प्रक्रियामा महिलाहरूको सक्रिय सहभागिता हुनुपर्ने कुराको निर्क्योल हुनुपर्ने कुराको विशेष निगरानी हुनु पर्दछ' भन्ने उल्लेख गरेको छ । साथै, 'सबैतहमा जनसहभागिताका लागि प्रोत्साहित गर्नुपर्ने जसले मानव अधिकारको आन्तरिकीकरण गर्दछ' भन्ने कुरालाई जोड दिइएको छ ।

अधिकांस विकास संस्थाहरू जनसहभागिता बिना समुदायमा गरिने कुनै पनि कार्यक्रमहरू दिगो हुन नसक्ने कुरा बताउँछन् । तर पनि, विकास प्रक्रियामा जनसहभागिता भयो कि भएन, यदि भएको छ भने कुन तहको सहभागिता भयो भनेर किटान गर्न कठीन छ ।

सहभागितालाई सापेक्षिक रुपमा हेरिनु पर्दछ । यसको लागि सहभागिताका तहहरूबारे जानकारी राख्नु आवश्यक हुन्छ । सहभागितामूलक अभ्यासहरूमा सहभागीहरूको सहभागितालाई कसरी मापन गर्न सकिन्छ भन्नेबारे विश्लेषण गर्दा मुलतः यसलाई चार तहमा विभाजन गर्न सकिने देखिन्छ । तलको चार्टले सहभागिताका तहहरुलाई प्रस्तुत गर्दछ :




शारीरिक उपस्थितिबाट सहभागिताको तह माथि बढ्दै जानु पर्छ । कसरी समुदायलाई नीति निर्माण तहमा सहभागी गराउने भन्नेबारे सहयोग गर्नु पर्दछ ।

## १.३ सहभागिताबाट वञ्चित वर्ग तथा समूहहरू

समुदायमा सञ्चालन गरिने प्राय विकास कार्यक्रमहरुमा स्थानीय जनताहरु जुटेर पर्याप्त छलफल अन्तरक्रिया गर्दछन् । सबै मिलेर साथसाथ कार्य पनि गर्दछन् । तर, यहाँनेर सबैभन्दा महत्वपूर्ण प्रश्न ती छलफल, अन्तरक्रिया र सहकार्यमा समुदायका कुन वर्ग र समूहको सहभागिता छ ? भन्ने प्रश्न महत्वपूर्ण छ । कतिपय बेलामा गरिबी निवारणका लागि समुदायमा नै बसेर छलफल गरेर कार्य योजना बनाइन्छ र त्यसको कार्यान्वयन पनि गरिन्छ । तर, गरिब स्वयं भने यी सबै प्रक्रियाबाट वञ्चित भइरहेका हुन्छन् । गरिबी निवारण कार्यक्रमको प्रतिफलले गरिब स्वयंलाई भने प्रभाव पारेको हुँदैन । यसरी गरिने कार्यक्रमले गरिबीलाई घटाउन त सक्दैन, तर हुने र नहुनेबीचको खाडललाई झनै फराकिलो बनाइदिन्छ, जसले समाजमा द्वन्द बढाउँछ ।

हाम्रो मुलुकको सामाजिक संरचना विविधताले भरिएको छ । विभिन्न जातजाति, धर्म, भाषा, संस्कृति मान्ने समूहहरु छन् । त्यसैले, विकास प्रक्रियामा 'कसको सहभागिता ?' भन्ने सवाल महत्वपूर्ण छ । हाम्रो सामाजिक विषम परिस्थितिलाई हेर्दा तल प्रस्तुत अवस्थाले विकास प्रक्रियामा जनसहभागितालाई असर पार्दछ :

- तथाकथित 'माथिल्ला जाति' को उपस्थितिमा 'दलित' हरूको उपस्थिति न्यून हुन्छ ।
- 'माथिल्ला जाति'काहरूले बोलेका कुराहरू नै सदर हुने/गरिने अवस्था छ ।
- हाम्रो मुलुकमा जातीय असमानता ठूलो समस्यामा रहेको छ । राजनीति होस् वा प्रशासन वा अन्य व्यवसाय नै किन नहोस्, त्यसमा दुई तीनवटा जातिको मात्रै 'डोमिनेशन' छ । एउटै समाजमा रहे बसे पनि विभिन्न जातिका बीच ठूलो असमानता छ ।
- राष्ट्रको कुल जनसंख्याको लगभग ६० प्रतिशत जनताहरुमा मात्र साक्षर छन् । यसमा पनि दलितहरूको संख्या अत्यन्तै न्यून छ । कथित माथिल्लो जाति ४७ प्रतिशत साक्षर छन् भने उत्पिडित जातिमा १८ प्रतिशत मात्र साक्षर छन् । 'योजना तर्जुमा' आदि प्रक्रियाको लागि गरिने 'सैद्धान्तिक वहस'हरूमा यी निरक्षरहरू स्वतः पछाडि धकेलिन्छन् ।
- 'विकास'का लागि छलफल तथा अन्तरक्रिया गर्ने, योजना बनाउने, रणनीति तयार पार्ने आदि कार्यहरू पढेलेखेका वुद्धिजिविहरूको कार्य हो भन्ने धारणा शिक्षितहरूमा पनि व्याप्त छ र यस कार्यका लागि गरिबहरूसँग छलफल गर्ने, गरिबहरूलाई समावेस गराउने कार्यमा पर्याप्त ध्यान पुग्न सकेको देखिँदैन ।

- यस्तैखाले सामाजिकीकरण प्रक्रिया (Socialization process) मा हुर्के बढेको कारण गरिबहरू स्वयं पनि 'हाम्रो लागि विकास गरिदिने काम भनेको बाहिरिया बुद्धिजिविहरूको हो' भन्ने धारणा पाइन्छ र उनीहरू सिमान्त हुनुमा यस्तो धारणाले पनि थप बल पुर्‍याइरहेको छ । 'विकासे संस्था'हरूको ओइरोले त झनै स्थानीय वासिन्दाहरूमा - खासगरी गरिब तथा उपेक्षितहरूमा 'विकास गर्ने भनेको विकासे संस्थाहरूको काम हो' भन्ने धारणाले जरो गाढेको छ ।
- यस्तो धारणा व्याप्त रहेको अवस्थामा 'सहभागितामूलक विकास प्रक्रिया' का नाममा गरिने छलफल अन्तरक्रियामा ती गरिब तथा उपेक्षितहरू पछाडि पारिएका छन् र 'अन्यत्रै निर्णय गरिएका विकासे कार्यक्रमहरूमा वा पूर्व-निर्धारित कार्यक्रमहरूमा' भौतिक रुपमा संलग्न हुने स्थितिमात्र रहन्छ ।
- कुल जनसंख्याको आधा हिस्सा ओगट्ने महिलाहरू पनि विकास प्रक्रियाको मुलधारबाट बाहिर नै छन् । 'पुरुष'हरूले तय गरेका कार्यक्रमहरूमा शारीरिक रुपमा उपस्थित हुनुबाहेक विकास निर्माण प्रक्रियामा र विकासको प्रतिफल पाउने कार्यबाट उनीहरू प्राय वञ्चित हुन्छन् ।
- राष्ट्रको कुल जनसंख्याको ४२ प्रतिशत भाग ओगट्ने केटाकेटीहरू (१६ वर्ष मुनिका)को अवस्था पनि उपेक्षित नै छ । सामन्ति संस्कार व्याप्त हाम्रो समाजमा "ठूलाबडाले बोलेको ठाउँमा नआउनु" भन्ने मान्यताले केटाकेटीहरू विकासका लागि हुने छलफल तथा वहसहरूमा भाग लिनु त परै जाओस् त्यस्ता कुराहरू सुन्नबाट पनि वञ्चित छन् ।

अब यहाँनेर सहभागितामूलक विकासको कुरा गर्दा कसको सहभागिता ? भन्ने सवाललाई प्रमुखताका साथ हेरिनु पर्ने आवश्यकता छ । अन्यथा 'अशक्तहरूको सशक्तिकरण' का लागि गरिने सहभागितामूलक विकास प्रक्रियाबाट अशक्तहरू सँधै उपेक्षित हुने प्रक्रियाले आगामी दिनहरूमा पनि निरन्तरता पाउने सम्भावना रहन्छ ।

## १.४ सहभागितामूलक विकास प्रक्रिया

सामाजिक विकास प्रक्रियालाई प्रारम्भदेखि नै समुदायको सक्रिय सहभागितामा सञ्चालन गर्न सँगैको चित्रमा देखाइएको प्रक्रियाअनुरुप अगाडि बढाउन सकिन्छ । समुदायका सबै वर्ग, लिंग अनि उमेर समूहका सदस्यहरूको सक्रिय सहभागितामा समुदायको विकास प्रक्रिया अगाडि बढाउनका लागि सहजकर्ता र समुदायको सम्बन्ध कस्तो छ भन्ने कुराले महत्वपूर्ण भूमिका खेल्दछ । सँगैको चित्रमा देखाइएझैं संस्थाले समुदायमा कार्य थालनी गर्नु अगाडि आवश्यक तयारी गर्दछ । तयारी पश्चात एकैपटक कार्यक्रम सुरु नगरी समुदायसँग पटकपटक भेटघाट, छलफल, अन्तरक्रिया गरी समुदायसँगको सम्वन्ध स्थापनालाई जोड दिइन्छ ।




समुदाय र संस्थाबीच गहिरो सम्वन्ध स्थापना भएपछि र समुदायको सशक्तिकरणका लागि विकास कार्य सञ्चालन गर्न दुबैपक्ष सहमत भएपछि समुदायको अवस्था कस्तो छ भनी हेर्न अवस्था विश्लेषण अभ्यास गरिन्छ । अवस्था विश्लेषण अभ्यासले समुदायको सवल पक्षहरू, समुदायमा रहेका स्रोतहरू, समुदायको सामाजिक, आर्थिक, शैक्षिक, कृषि लगायत सम्पूर्ण अवस्था स्पट झल्काउँछ । समुदायमा परिवर्तन गर्नुपर्ने सवालहरूलाई पहिल्याउँछ । त्यसैमा आधारित भई 'अब समुदायलाई कस्तो बनाउने वा समुदायमा के परिवर्तन गर्ने' भन्नेबारे समुदाय र संस्थाबीच छलफल गरी योजना तर्जुमा गरिन्छ ।

योजना तर्जुमापश्चात योजना कार्यान्वयनको लागि स्रोतको व्यवस्थापन कसरी गर्ने, ती स्रोतहरूलाई स्थानीय स्तरमा कसरी जुटाउने, बाहिरबाट सहयोग चाहिने स्रोतहरू के हुन् भन्नेबारे विस्तृत छलफल गरिन्छ । स्रोत व्यवस्थापनका सम्वन्धमा बाहिरबाट स्रोत भित्र्याउने कुरालाई जोड नदिई समुदयमा नै रहेका स्रोतहरू (प्राकृतिक, मानवीय, सामाजिक, आर्थिक र भौतिक स्रोतहरू) को अत्यधिक उपयोगलाई

प्राथमिकता दिइन्छ । त्यसपछि, गा.वि.स. तथा स्थानीय संघसंस्थामा रहेका स्रोतहरूको परिचालन गर्ने कुरालाई जोड दिइन्छ । स्थानीय रुपमा उपलब्ध हुन नसक्ने अत्यावश्यक स्रोतलाई बाहिरबाट कुन तरिकाले ल्याउने भन्नेबारे समुदायबीच छलफल गरी निर्णय गरिन्छ ।

स्रोत व्यवस्थापन भइसकेपछि तर्जुमा गरिएका योजनाहरूलाई कार्यान्वयन गर्ने कामको प्रारम्भ हुन्छ । योजना कार्यान्वयन पनि समुदायकै नेतृत्वमा गरिन्छ । समुदायलाई सहजीकरण गर्ने कार्य भने स्थानीय सहजकर्ताहरूले गर्दछन् । यस कार्यमा स्थानीय संघसंस्थाहरूले पनि सहयोग गर्दछन् । कार्यक्रम कार्यान्वयनका क्रममा कार्यान्वयन प्रक्रिया के-कसरी अगाडि बढीरहेको छ, योजना गरेअनुरुप कार्यान्वयन भइरहेको छ की छैन भनी अनुगमन पनि गरिन्छ ।

कार्यक्रम कार्यान्वयनपश्चात त्यसको प्रभाव हेर्नको लागि मूल्यांकन कार्य सम्पन्न गरिनेछ । मूल्यांकन कार्य पनि सम्वन्धित जनताहरूको नै सक्रिय सहभागितामा गरिन्छ, जसलाई सहभागितामूलक मूल्यांकन भनिन्छ ।

## २. सहजीकरणको परिचय

### २.१ सहजीकरण के हो ?

विकास कार्यकर्ताले पैरवी र सहजीकरण दुई शब्दवालीबीचको भिन्नता बुझ्नै पर्दछ । यी दुई शब्दावलीहरु बीच केही सामञ्जस्यता छ । तापनि, पैरवीले कुनै निर्दिष्ट सवाललाई लक्षियत गरेको हुन्छ र धेरैजसो बाहिरियाहरूले समुदायमा वकालतको कार्य गरेका हुन्छन् र यसको स्वरुप लघुकालिन हुन्छ वा वकालत गरिएको सवालसम्वन्धी समस्याको समाधान भएपछि वकालत गर्ने कार्य टुंगिन्छ । जबकि, सहजीकरण सँधै समुदायको साथमा हुन्छ र सहजीकरणले जनताहरूको सशक्तिकरण अनि एकआपसबीच आदर गर्ने कुरालाई जोड दिन्छ र यसले दिगो विकास कार्यक्रमहरूलाई निश्चित तुल्याउँछ ।

विकासका लागि समुदायलाई सहजीकरण गर्ने भनेर मात्र पुग्दैन । समुदायमा विद्यमान विभेदहरू पनि हेरिनु पर्दछ । समाजमा लिङ्ग, उमेर, सम्पन्नताका हिसाबले थुप्रै विभेदहरू हुन्छन् । त्यस्तै, समाजमा सामाजिक तथा धार्मिक लगायत थुप्रै विभेदहरू पनि हुन्छन् । एक असल तथा सक्षम सहजकर्ता यी विभेदहरूबारे परिचित हुनै पर्दछ । तबमात्र 'कसको सहभागिता ?' भन्ने प्रश्नलाई लक्षियत गरी सहजीकरण गर्न सक्दछन् ।

प्राय विकासे कार्यकर्ताहरू विकासबारे आफूलाई थाहा छ र समुदायलाई थाहा छैन भन्ने मान्यता राख्दछन् । यस्तो भावना भएका विकास कार्यकर्ताहरूमा प्राय उच्चतावोध (सुपरियरिटी कम्प्लेक्स्) व्याप्त हुन्छ । उनीहरूको प्रवृत्ति पनि अरुलाई दवाव दिने वा होच्याउने खालको हुन्छ । यस्ता विकास कार्यकर्ताहरूलाई सहजकर्ता भन्न सकिँदैन र उनीहरू सामाजिक परिवर्तनका लागि सहजीकरण गर्न पनि सक्दैनन् ।

राम्रो सहजीकरण स्वयं सहजकर्ताहरूको लागि पनि एक सिक्ने अवसर हुन्छ र यसबाट उनीहरुले आफ्नो क्षमता अभिवृद्धि गर्ने अवसर पनि प्राप्त गर्दछन् । कतिपय पुस्तकहरूमा सहजकर्तालाई 'क्याटालिस्ट'को रुपमा व्याख्या गरेको भेटिन्छ । 'क्याटालिस्ट' ले आफू परिवर्तन नभईकन अर्को पक्षलाई परिवर्तन गर्न सहयोग गर्दछ । तर, सहजकर्तालाई 'क्याटालिस्ट' को रुपमा मात्र बुझ्नु हुँदैन । सहजकर्ताहरू आफू पनि परिवर्तन हुन्छन् : सिकाईको हिसाबले । र, प्राय सहजकर्ताहरू समुदायलाई छलफल गर्न, निर्णय गर्नका लागि जिम्मेवारी हस्तान्तरण गर्दछन् । असल सहजकर्ताले जहिले पनि नियन्त्रण गर्ने कार्यलाई परित्याग गर्दछन् र अनुभवबाट सिकीराखेका

हुन्छन् । एक असल सहजकर्ताले सहजीकरणबाट सिकीरहेका हुन्छन्, कामको लागि प्रयास गरेर सिकीराखेका हुन्छन्, जोखिम बाट, गल्तिबाट, र सुधारबाट पनि सिकी नै राखेका हुन्छन् ।

## २.२ सहजीकरण किन ?

सर्वसाधारण जनताहरूको आधिकारिक सहभागिता भन्ने कुरा अझैसम्म पनि वास्तविकता भन्दा आदर्शको रुपमा नै रहेको छ । सहभागितामूलक विकासमा लागेका व्यक्ति तथा संस्थाहरू सहभागिताको आदर्श तहभन्दा पर जानका लागि प्रयासरत छन् । उपेक्षित अनि दबिएका जनताहरूलाई निर्णय प्रक्रिया तथा विकास सञ्चालन प्रक्रियामा संलग्न गराउनु पर्ने कुराको महसुस भएको छ । तर, उक्त कुराको महसुस गर्दैमा ती प्रक्रियाहरूमा जनसहभागिता हुन सक्छ नै भन्ने हुँदैन ।

सहजकर्ताहरूको लागि 'सहभागिताको कुरा गर्न' जति सजिलो छ 'कुरा गरेअनुसार काम गर्न' र त्यो पनि प्रतिवद्धतासहित ती कुरालाई लागु गर्न धेरै गाह्रो छ । निर्णय प्रक्रियामा उपेक्षित वर्गको सहभागितालाई सुनिश्चित गराउन तीन वटा प्रश्नहरू महत्वपूर्ण हुने देखिन्छ :

१. विकास अधिकार हो भन्नेबारे ती जनताहरू जानकार छन् ?
२. विकास पद्धति सहभागितामूलक छ कि छैन ?
३. सहजकर्ता उपेक्षित वर्गलाई सहभागी गराउने सवालमा प्रतिवद्ध छन् कि छैनन् ? र, उपेक्षित वर्गलाई कसरी सहभागी गराउन सकिन्छ भन्नेबारे सहजकर्तामा पर्याप्त सीप छ कि छैन ?

यदि स्थानीय जनताहरू उनीहरूको विकास प्रक्रिया उनीहरू स्वयंले नै नेतृत्व लिन पाउनु पर्दछ, यो उनीहरूको अधिकार र जिम्मेवारी पनि हो भन्नेबारे जानकार छन् भने उनीहरूको सक्रिय सहभागिता सम्भव हुन्छ । वर्तमान समयमा अधिकांश जनताहरू "विकास भनेको सरकारी वा गैरसरकारी संस्थाहरूले समुदायमा आएर 'गरिदिने' कुरा हो" भन्ने मान्यता राख्दछन् । साथै, विकासे संस्थाहरू समुदायप्रति सद्भाव (अझ दयाभाव) राख्छन् । जबसम्म उपेक्षित वर्ग 'विकास हाम्रो अधिकार हो' भन्ने कुराबारे सचेत हुँदैन तबसम्म विकास प्रक्रियामा उनीहरूको सक्रिय सहभागिता हुन सक्दैन । यसबारे सहजकर्ता सचेत हुनै पर्दछ र समुदायलाई सचेत गराउने जिम्मेवारी पनि सहजकर्ताको हो ।

विकास पद्धतिको स्वरुप केन्द्रिकृत (वा टप-डाउन) होउन्जेलसम्म स्थानीय जनताहरूको, खासगरी उपेक्षित वर्गको सक्रिय सहभागिता सम्भव हुँदैन । सर्वप्रथम विकासको अवधारणा, विकासको प्रक्रिया, प्रक्रिया अगाडि बढाउन प्रयोग गरिने विधिहरू सहभागितामूलक हुनु पर्दछ ।

सबैभन्दा महत्वपूर्ण कुरा भनेको विकास प्रक्रियालाई अगाडि बढाउन सहयोग गर्ने सहजकर्ताको प्रवृत्ति र व्यवहार 'परिवर्तनमूखि' नभईकन उसले सहजीकरण गर्ने विकास प्रक्रियाले सामाजिक परिवर्तन सम्भव गराउँदैन । सहजकर्ताको उपेक्षित वर्गप्रतिको प्रतिवद्धता, उसको क्षमता, उसको सीप आदि कुराहरू अत्यन्तै महत्वपूर्ण हुन्छ ।

## २.३ सहजीकरण प्रक्रिया

कुनै पनि सहभागितामूलक छलफल तथा अभ्यासहरूको सहजीकरण गर्दा यसको प्रक्रिया कसरी अगाडि बढ्नु पर्दछ भन्नेबारे सहजकर्ताले बिचार गरी त्यसको लागि विशेष तयारी गर्नु पर्दछ । सहजीकरण प्रक्रियालाई तलको चित्रमा देखाइएझैँ अगाडि बढाउन सकिन्छ ।




मुलतः छलफल तथा अभ्यासको सुरुआत कसरी गर्ने, छलफलमा सहभागीहरूको बिचार तथा भावनाहरूलाई कसरी समेट्ने वा छलफल कार्यलाई कसरी फैलाउने, छलफलका क्रममा आउने कठीनाईहरूलाई कसरी सामना गर्ने, त्यसपछि छलफलका

क्रममा आएका विविध विचारहरूलाई समेट्दै कसरी निर्णयतर्फ लैजाने र अन्त्यमा निष्कर्ष निकाल्न सहयोग गर्ने भन्ने कुराको पूर्व तयारी हुनु पर्दछ ।

सामान्यतया, माथिको 'सहजीकरण प्रक्रिया फ्रेमवर्क' मा देखाइएझैँ सर्वप्रथम त सहभागितामूलक छलफलको सुरुआत हुन्छ, जसमा सहजकर्ताले सक्रिय भूमिका खेल्दछन् । छलफलको सुरुआत भएपछि छलफलका क्रममा सबै सहभागीहरूलाई आफ्नो बिचार राख्न उत्प्रेरित गर्नु पर्दछ । छलफल विविध विचारहरूलाई समेट्दै फैलन थाल्दछ । छलफलको फैलावटका क्रममा सहभागीहरूले आफ्नो मनका भावनाहरू व्यक्त गर्दछन्, तर्कहरू पेश गर्दछन् । फ्रेमवर्कमा देखाइएको वाण चिन्ह (→) ले सहभागीको बिचार, तर्क, भावनालाई बुझाउँछ । छलफल फैलने क्रममा एउटा यस्तो अवस्था आउँछ जहाँ बिचारहरू बाझिन (पनि) सक्छन् र सहभागीहरूबीच बिचारको द्वन्द पनि हुनसक्छ । फरक फरक बिचारहरू आउन थाल्दछन् वा नकारात्मक रुपमा वा पूर्ण रुपमा विपरित तर्क/बिचारहरू पनि आउँछन् । केही फरक बिचारहरू नकारात्मक उद्देश्यसहित पनि आउन सक्छन् । केही सहभागीहरूले छलफललाई नै विथोल्ने अभिप्रायले पूर्ण बिरोधी तर्क राख्न सक्दछन् । 'सहजीकरण प्रक्रिया फ्रेमवर्क'का अनुसार यो अवस्थालाई कठीन क्षेत्र भनिन्छ । सहजकर्ताले यस्ता अभिप्रायहरूलाई सामान्य रुपमा नै लिनु पर्दछ । सहभागितामूलक छलफल तथा अभ्यासहरूमा प्राय यस कठीन अवस्था आउँछ नै । यसले छलफलमा विविध बिचारहरूको सहभागिता भयो भन्ने जनाउँछ र कुनै पनि व्यक्ति वा समूह विशेषले छलफललाई नियन्त्रण गरेको छैन भन्ने बुझाउँछ । तर, छलफललाई 'कठीन क्षेत्रबाट' पार गराउनका लागि सहजकर्ताको भूमिका महत्वपूर्ण हुन्छ । सहजकर्ताले यो अवस्थामा विशेष भूमिका खेल्नु पर्ने हुन्छ । कठीन अवस्थाबाट कसरी पार गर्ने भन्ने कुराको कुनै शुत्र त हुन सक्दैन । बरु, कस्तो कठीन अवस्था छ र यसका तत्कालिन कारणहरू के हुन् भन्ने कुरा बुझेर सो अवस्थालाई पार लगाउन उपयुक्त विधिको प्रयोग गर्ने वा उपयुक्त उदाहरण तथा घटना अध्ययन प्रस्तुत गर्न सकिन्छ । कहिलेकाहीँ समूह कार्य गर्दा पनि कठीन क्षेत्रलाई पार गर्न सकिन्छ ।

यदि सहभागितामूलक अभ्यास 'कठीन क्षेत्र' लाई पार गर्न नसकी त्यत्तिकै टुंगियो भने त्यो पिडादायी हुन्छ । 'कठीन क्षेत्र' मा सामना गर्नुपर्ने विवाद/द्वन्दलाई पार नगरी त्यत्तिकै छाडिएमा सहभागीहरूबीच कटुता पैदा भई यसले उनीहरूको दिनानुदिनको व्यवहारिक सम्वन्धमा पनि असर गर्न सक्दछ । 'कठीन क्षेत्र' पार गरेपश्चात छलफलले पुनः गति लिन थाल्दछ र यसलाई निष्कर्षतर्फ लैजानु पर्दछ । यस कार्यका लागि पनि सहजकर्ताले महत्वपूर्ण भूमिका खेल्नु पर्दछ । तर सँधै एउटै निष्कर्ष निक्लन सक्छ भन्ने

जरुरी छैन । जाति, धर्म, भाषा, भौगोलिक, आर्थिक अवस्था, चेतना स्तर, आदि विविधताले भरिभराउ हाम्रो सामाजिक परिप्रेक्ष्यमा सँधै एउटै निष्कर्ष प्रभावकारी नहुन सक्छ । मुल कुरा सहजकर्ताले छलफल 'कठीन क्षेत्र'मा आइपुग्यो भन्नेबारे जानकार हुनै पर्दछ किनकी यस समयमा सहजकर्ताको प्रभावकारी सहजीकरणको आवश्यकता पर्दछ ।

सहजकर्ताले सँधै याद गर्नुपर्ने कुरा भनेको सहभागितामूलक अभ्यासहरूमा कसको सहभागिता भएको छ र कसको हुन सकिरहेको छैन भन्नेबारे सँधै सजगताका साथ निगरानी गर्न सक्नु पर्दछ । यस सम्बन्धमा बुँदा १.२ अन्तर्गत 'सहभागितामूलक अभ्यासमा सहभागीहरूको सहभागिता तह' शिर्षक अन्तर्गत व्याख्या गरिएको छ ।

## २.४ शत्र-योजना तर्जुमा

कुनै पनि तालिम वा गोष्ठी कार्यक्रमलाई प्रभावकारी बनाउन सहजीकरण प्रक्रियाको महत्वपूर्ण भूमिका रहन्छ । त्यस्तै, सहजीकरण प्रक्रियालाई प्रभावकारी बनाउन त्यसको लागि गरिने तयारीले निर्णायक भूमिका खेल्दछ । त्यसैले, सहजकर्ताले कार्यक्रमको शत्र-योजना (सेसन प्लान) तयार पार्दा सहजीकरण गर्ने विषयवस्तु लगायत कार्यक्रमका अन्य विविध पक्षबारे गहिरो जानकारी राख्नु पर्दछ । यदि सहि तरिकाले गहिरो विश्लेषणका साथ शत्र-योजना तयार पार्ने हो भने सहजीकरण प्रक्रिया सहजताका साथ अगाडि बढाउन सकिन्छ । शत्र-योजना तयार पार्ने क्रममा नै सहजीकरण गर्दा के-कस्ता कठीनाईहरु आईपर्छन् भन्ने थाहा हुने हुँदा कसरी ती कठीनाईहरुको सामना गर्ने कुराबारे पूर्व तयारी गर्न सकिन्छ ।

शत्र-योजना तयार पार्दा मुलतः विषयवस्तुको गहिराई, विषयवस्तुअनुसारको समयावधि, सहभागी संख्या र प्रकार, विषयवस्तुले अपेक्षा गर्ने परिणामबारे जानकारी हुनु पर्दछ । सो जानकारी भएपछि त्यसैअनुसार विषयवस्तुलाई अगाडि बढाउने चरणवद्धता, प्रत्येक चरणलाई अगाडि बढाउन उपयोग गरिने विधि, प्रत्येक चरणको लागि आवश्यक समय, आवश्यक सामग्री र प्रत्येक चरण आउन सक्ने सम्भावित चुनौतीहरुबारे मनन गरी त्यसको समाधानको लागि आवश्यक तयारी गर्नु पर्दछ । शत्र-योजना तयार पार्ने क्रममा सहजकर्ताले विभिन्न फारमको प्रयोग गर्न सक्छन् । नमुना स्वरुप पछिल्लो पृष्ठम एक फारम प्रस्तुत गरिएको छ ।

# सत्र योजना

विषय :

उद्देश्य :

समयावधि :

सहभागी :

- संख्या :
- प्रकार :

| विषयवस्तु/प्रक्रिया | विधि | समय | अपेक्षित परिणाम | सहजकर्ता | आवश्यक सामग्री | सम्भावित चुनौतीहरु | समाधानका उपायहरु |
|---|---|---|---|---|---|---|---|
| | | | | | | | |

नोट : आवश्यकतानुसार कोष्ठ थप्न सकिन्छ

## २.५ सहजीकरण अभ्यास समीक्षा

तालिम वा गोष्ठी कार्यक्रमलाई सहजीकरण गरेपछि त्यसको प्रभाव कस्तो रह्यो वा सहजीकरण अभ्यास नै कस्तो रह्यो भनेर समीक्षा गर्नु पर्दछ । यस्तो समीक्षाले आगामी सहजीकरण अभ्यासलाई अझै प्रभावकारी बनाउन सहयोग पुऱ्याउँदछ ।

सहजीकरण गर्दा कुनै कठीनाई आएमा वा सहजीकरणको प्रभाव राम्रो नभएमा त्यसको समाधानको लागि सहि कारण पत्ता लगाउनु पर्दछ । कारण थाहा भएपछि मात्र समस्याको सहि समाधान निस्कन्छ । यदि सहि विश्लेषण हुन नसकेमा समस्याको कारण एकातिर हुन्छ र समाधानको लागि प्रयास अर्कैतर्फ भइरहेको हुनसक्छ ।

तालिम वा गोष्ठी कार्यक्रमको सफल कार्यान्वयन हुन नसक्नाका विभिन्न कारण हुन सक्छन् । कतिपय अवस्थामा कार्यक्रमको असफलताको कारण समुदाय स्वयं नै हुनसक्छ । समुदायको कार्यक्रम प्रतिको अरुचि, समुदायका सदस्यहरुबीचको विवाद, आदि कारणहरुले कार्यक्रमलाई नकारात्मक रुपमा प्रभावित गरेको हुनसक्दछ । त्यस्तै, कुनै बेला समुदायमा हुने राजनैतिक खिचातानीले पनि कार्यक्रमलाई प्रभाव पार्छ भने कतिपय बेलामा प्राकृतिक वातावरण पनि कार्यक्रमको असफलताको कारक तत्व हुन सक्छ । कुनै बेला सहजकर्ताको सीपको कमीको कारण वा कमजोर ज्ञानका कारण पनि सहजीकरण कमजोर हुनसक्छ । कुन कारणले कार्यक्रम असफल भएको हो भन्ने कुराको सहि विश्लेषण हुनु पर्दछ । तबमात्र, समस्याको उपयुक्त समाधान निस्कन सक्दछ ।

कार्य असफलताको सहि विश्लेषण गर्न विभिन्न विधिहरुको प्रयोग गर्न सकिन्छ । हाम्रो उद्देश्य भनेको समस्याको सहि विश्लेषणको लागि समुदायसँग पनि छलफल गर्नु हो । यसको लागि सकेसम्म सरल र सहज विधिको आवश्यकता पर्दछ । यस पछाडिको पृष्ठमा एक समस्या विश्लेषण फारम प्रस्तुत गरिएको छ । यसको उपयोग गरी समस्याको सहि विश्लेषण गर्न सहयोग मिल्दछ ।

# सहजीकरण अभ्यास समीक्षा फारम

| कठीनाई/समस्या | समुदाय | सहभागी | विधि | प्रक्रिया | विषयवस्तु | राजनैतिक वातावरण | प्राकृतिक वातावरण | संस्था (छवि) | सहजकर्ता | | | अन्य |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | सीप | ज्ञान | प्रवृत्ति | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |
| | | | | | | | | | | | | |

## ३. सहजकर्ताबारे

### ३.१ सहजकर्ता को हो ?

सहजकर्तालाई महत्वपूर्ण र तालिमप्राप्त सञ्चारकर्ताको रुपमा हेरिनु पर्दछ । साथै, यी सहजकर्ता सञ्चार सम्वन्धी सिद्धान्त र अभ्यासका सम्वन्धमा ज्ञानप्राप्त र सीपप्राप्त व्यक्ति भएर मात्र पुग्दैन बरु एक सक्षम प्रौढका लागि शिक्षाकर्मी हुनु पर्दछ जसले निम्न स्तरका जनताहरूलाई सञ्चान गर्न सक्ने क्षमता अभिवृद्धि गराउनुका साथै उनीहरूलाई स्रोतबारे जान्न र स्रोत प्राप्त गर्नका लागि आवश्यक सूचनाहरूमा पहुँच बढाउन मद्धत गर्दछ ।

संगठीत भावना/संवेदना तथा बिचारहरूले समुदायको भावना जागृत गर्न क्रियासिल तुल्याउँछ र एकआपसिय विश्वास अनि भरोसा जगाउन सहयोग गर्दछ र स्व-जागरण गराउँछ, र नयाँ कार्यहरूमा लाग्नका लागि निरन्तर रुपमा खुला रहनका लागि व्यक्तिहरूलाई प्रेरित गर्दछ । Synergy त्यस्तो एउटा झिल्का हो जसले सिर्जनशील सम्वन्धहरूलाई अरुले कसरी हेर्दछन् भन्ने हेर्नका लागि उत्प्रेरित गर्दछ - सिर्जनसील सहकार्यको विशिष्टता नै यहि हो । सहजकर्ताले सदैव सहभागितालाई आन्तरिक सिर्जना-क्षमता तयार हुन दिनु पर्दछ जसले सामूहिक प्रयास र साझेदारिताको लागि उत्प्रेरित गर्दछ ।

### ३.२ सहजकर्तामा हुनुपर्ने गुणहरू

विकास कार्यकर्ताको प्रवृत्ति र व्यवहार कस्तो हुनु पर्दछ भन्ने सवालमा विभिन्न अन्तरक्रिया कार्यक्रममा छलफल गरिएका बुँदाहरू महत्वपूर्ण देखिएकोले यहाँ प्रस्तुत गरिएको छ ।

**सरल स्वभाव** : नरम तथा हँसिलो व्यवहार, लवाइ, हिँडाई आदिमा तडकभडक नभएको, छलकपट नभएको ।

**लचिलोपना** : आफ्नै कुरामात्र ठीक हो भनेर नभन्ने, अरुको भावनालाई पनि आदर गरी मान्यता प्रदान गर्ने, अवस्थाअनुसार चल्न सक्ने ।

**जिम्मेवारी बहन गर्न सक्ने** : आफूलाई दिइएको कार्य समयमै पूरा गर्न सक्ने, लक्ष्यप्रति सजक तथा जानकार, गर्न नसक्ने कार्यलाई पहिले नै सकिँदैन भनेर भन्ने ।

**अरुको सुख दु:खमा सहभागी हुने :** आफ्नो सुखलाई भन्दा समुदायका मानिसहरूको दु:ख-सुखलाई ध्यान दिने, उनीहरूको दु:खबारे छलफल गर्ने ।

**लगनशील :** आफ्नो कार्यमा विश्वास लिई निरन्तर कार्यमा भित्री इच्छासहित लागिपर्ने । कार्यको जिम्मा लिइसकेपछि पूरा नहोउन्जेल लागि रहने ।

**कम बोल्ने धेरै सुन्ने :** समुदायमा कार्य गर्दा आफू कम बोल्ने र समुदायको कुरा धेरै सुन्ने, उपदेश नदिने, आवश्यक सुझाव मात्र दिने ।

**अनुशाषित :** ठीक आचरण भएको । समुदायमा अपच हुने व्यवहार नगर्ने, समुदायको संस्कृतिलाई ध्यानमा राखी व्यवहार गर्ने, अरुलाई सम्मान गर्ने, नियमको पालना गर्ने । विशेषगरी महिलाहरूसँगको व्यवहारमा संवेदनशील ।

**विषयवस्तुमा निपूर्ण :** विषयवस्तुमा दक्षता हुनुपर्ने (समुदायलाई परिचालन गर्ने, उत्प्रेरणा जगाउन सक्ने आदि), जुन विषयमा काम गर्ने हो त्यससम्वन्धी पूर्ण ज्ञान भएको । विवाद समाधान गर्न सक्ने क्षमता हुनुपर्ने ।

**कुरा बुझाउन सक्ने क्षमता :** विभिन्न विधि वा माध्यमको प्रयोग गरी विषयवस्तुको महत्वबारे बुझाउन सक्ने, छलफल गरी निर्णयमा पुऱ्याउन सक्ने ।

**दृढ :** सहि अटोठ लिएर कार्य गर्ने, कार्यक्रमबारे पूर्ण विश्वस्त भई कार्य गर्ने र वचन पूरा गर्ने ।

**समान व्यवहार गर्ने :** सामाजिक, लैंगिक, आर्थिक, राजनैतिक, जातिय, धार्मिक, भेषभुषा जस्ता कुराहरूमा भेदभाव नगर्ने, विविधतालाई सम्मान गर्ने, शब्दको प्रयोग गर्दा भेदभाव हुने खालका शब्दहरूको प्रयोग नगर्ने ।

**समयअनुसार निर्णय गर्न सक्ने :** समयको पहिचान गरी परिस्थितिअनुरुप निर्णय लिने र तुरुन्त निर्णय गर्न सक्ने ।

**समस्याको पहिचान गर्न सक्ने :** समुदायको सहि विश्लेषण गर्ने, वास्तविक आवश्यकता पहिचानमा समुदायका सम्बन्धित सदस्यहरूलाई नै परिचालन गर्ने,

आवश्यकतानुसार पर्याप्त सहयोग गर्ने, आवश्यकता पहिचान कार्यमा प्राविधिक सहयोग दिने ।

**पारदर्शीता अपनाउने** : समुदायमा कुनै पनि कार्य गर्दा कुरा नलुकाउने, चाहे सूचना संकलन गर्दा होस् या अन्य कार्य गर्दा किन गर्न लागेको, कसरी गर्ने भन्नेबारे समुदायलाई जानकारी गराउने, अझ समुदायको पूर्व स्विकृति पश्चात मात्र कार्य गर्ने ।

**तटस्थता** : दोधारे कुरा नगर्ने, कसैलाई काखा र पाखा नगर्ने, आफ्नो कुरा निष्पक्षताका साथ राख्ने । राजनैतिक, धार्मिक, जातिय वा कुनै पनि समूह वा बिचारको पक्ष नलिने, सबैलाई समान व्यवहार गर्ने । गुटवन्दी नगर्ने ।

**सरल भाषा** : सकेसम्म स्थानीय भाषालाई मान्यता दिने र सोहीअनुरुप कुराकानी गर्ने, समुदायमा कुरा गर्दा सकेसम्म अंग्रेजी शब्द घुसाएर कुरा नगरी समुदायले बुझ्ने हिसाबले सरल शब्दहरूको चयन गरी कुराकानी गर्ने । एकपल्ट भन्दा नबुझेमा पुनः सरलताका साथ कुरा स्पष्ट पार्ने ।

**धैर्यता** : हडबड नगरी कार्य गर्ने, समस्या आएमा नआत्तिने ।

**समुदायमा घुलमिल हुन सक्ने** : समुदायका विभिन्न उमेर, पेशा, धर्म, संस्कृति, बिचार, रुचि आदि भएका व्यक्तिहरू हुन्छन् । सबैसँग छलफल, अन्तरक्रिया गर्ने । कामाबाहेकको समयमा पनि समुदायका व्यक्तिहरूसँग उनीहरूको व्यक्तिगत जीवनका कुराकानी गर्ने, सुखदुःख बाँड्ने ।

**समयलाई ध्यान दिने** : निश्चित समयमा निश्चित कार्यहरू गर्ने, समुदायलाई बोलाएको समयभन्दा आफू अगाडि पुग्ने, समुदायको समयलाई ध्यान दिने ।
सामाजिक परिवर्तनका लागि गरिने विकास कार्यक्रमहरूलाई सहजीकरण गर्न सहजकर्तामा तीन पक्षहरूको समायोजन हुनु आवश्यक देखिन्छ : प्रवृत्तिगत पक्ष, ज्ञान वा अवधारणागत पक्ष र सीप पक्ष । साथै, ती तिनै पक्षसँग सम्बन्धित गुणहरू सहजकर्तामा हुनु पर्दछ । ती गुणहरूलाई यसरी प्रस्तुत गर्न सकिन्छ :

| ज्ञान / अवधारणा | प्रवृत्ति | सीप |
| --- | --- | --- |
| • विकास अवधारणाबारे समग्र बुझाई भएको<br>• सहभागिता र सहभागितामूलक पद्धतिबारे ज्ञान<br>• जनमूखि विकास अवधारणाबारे स्पष्ट<br>• सामाजिक शक्ति संरचना बुझेको<br>• सहभागितामूलक विकास प्रक्रियाबारे जानकार<br>• द्वन्द व्यवस्थापन गर्न सक्ने<br>• सम्बन्धित विषयवस्तुबारे ज्ञान भएको | • सकारात्मक सोँच<br>• समुदायको बिचारहरूलाई आदर गर्ने<br>• समुदायको क्षमतामा विश्वास गर्ने<br>• सामाजिक परिवर्तनका लागि प्रतिवद्ध<br>• स्थानीय संस्कृतिलाई आदर गर्ने<br>• खुल्ला सोँच भएको<br>• उच्च तहको सिक्ने प्रवृत्ति<br>• संवेदनशील (लैंगिक, संस्कृति आदि सवालमा) | • सञ्चार सीप<br>• समूह परिचालन सीप<br>• सुन्न सक्ने सीप<br>• सामाजिक विश्लेषण गर्न सक्ने<br>• सहभागितामूलक विधिहरूको प्रयोग गर्न सक्ने<br>• व्यवस्थापन सीप भएको<br>• नेतृत्व लिन पनि सक्ने |

## ३.३ सहजकर्ताको भूमिका

सहभागितामूलक विकास प्रक्रियालाई प्रभावकारी बनाउन सहजकर्ताले निर्वाह गर्नुपर्ने खासखास भूमिका के हो त ? भन्ने प्रश्न महत्वपूर्ण छ । समग्रमा सहजकर्ताले निम्न भूमिका निर्वाह गर्नु पर्दछ :

- सहभागीहरूलाई सहकार्य गर्न सहयोग गर्ने ।
- कुनै पनि कार्यलाई सफलतापूर्वक सम्पन्न गर्न र त्यसको प्रभावकारी परिणाम निकाल्न सहयोग गर्ने ।
- सामाजिक परिवर्तनका अन्यत्र प्राप्त अनुभव सहभागीहरूलाई सुनाउने ।
- सामाजिक विकास गर्ने क्रममा द्वन्द सिर्जना भएमा त्यसको समाधानको लागि पहल गर्ने ।
- सामाजिक विकास प्रक्रियालाई सहज र रमाइलो बनाउने । यसले सामान्य जनताहरूलाई पनि सक्रिय रुपमा सहभागी हुन उत्प्रेरित गर्दछ ।
- सहभागितामूलक छलफलका लागि वातावरण सिर्जना गर्ने ।
- उपेक्षित वर्गको सक्रिय सहभागिताका लागि उत्प्रेरित गर्ने । यसका लागि विभिन्न विधिहरूको प्रयोग गर्नुपर्ने हुन्छ ।

सहजकर्ताको भूमिकाका सम्बन्धमा मोरङ जिल्लाको उर्लाबारी गा.वि.स.स्थित एक गाउँमा सञ्चालित सरसफाई अभियानलाई अगाडि बढाउने क्रममा सहजकर्ताले खेलेको भूमिकाले उक्त अभियान प्रभावकारी हुन सक्यो[5] ? भन्ने अनुभवका आधारमा सहजकर्ताले सामाजिक विकासका लागि निम्न भूमिका खेल्न सक्छन्/पर्दछ भन्न सकिन्छ :

(मोरङ उर्लाबारीको एक समुदायमा आधारित सरफाई कार्यक्रमको अनुभवको आधारमा)

क. सहभागीहरूलाई आफ्नो (वा समुदायको) अवस्था बुझ्न गर्न सहयोग गर्नुहोस् :

- समुदायको अवस्था (उदाहरणको लागि सरसफाईको) कस्तो छ भनेर जान्नको लागि सहयोग गर्ने ।
- अवस्था बुझ्नको लागि छलफल, अवलोकन, नक्सांकन तथा अन्य विधिहरूको प्रयोग गर्ने ।
- विषयवस्तु बारे बुझ्न आवश्यक जानकारी/सूचना दिने । सरसफाई भनेको के हो ? ठाउँ वा वातावरण फोहोर कसरी हुन्छ ? आदि इत्यादि ।
- समुदायलाई "ए, हाम्रो अवस्था यस्तो रहेछ !" भन्ने बनाउने ।

ख. अवस्था विश्लेषण गर्न सहयोग गर्नुहोस् :

- अहिलेको अवस्था किन यस्तो भयो ? कसरी यस्तो भयो ? यस्तो भएमा के असर पार्दछ भन्नेबारे विभिन्न सूचनाहरूलाई एकआपसमा तुलना गरेर देखाउने ।
- उदाहरणको लागि फोहोरले पार्ने असर के हो ? यसले मानिसको कुन पक्षलाई बढी प्रभाव पार्दछ ?
- समस्याले (उदाहरणको लागि फोहोरले) पार्ने प्रभावलाई उदाहरणहरू दिएर बुझाउने । समुदायमा नै कुनै उदाहरण देखिएमा त्यसलाई स्पष्टसँग देखाइदिने । यस्ता उदाहरणहरूले समुदायलाई प्रत्यक्ष प्रभाव पार्दछ ।

ग. समुदायले समस्या तथा सवालबारे बिचार गर्ने वातावरण तयार पारिदिनुहोस् :

- सबै कुरा समुदायलाई भन्ने वा बुझाउने नभई आफ्नो अवस्था बुझ्नको लागि समुदायलाई सहयोग गर्ने ।

[5] लान नेपाल, बाल-केन्द्रित सामुदायिक विकास अवधारणा गोष्ठी प्रतिवेदन, २०६२

- समस्या भयो भने के हुन्छ ? समस्या कसरी समाधान गर्ने ? भन्नेबारे समुदायलाई नै सोँच्नको लागि वा बिचार गर्नको लागि वातावारण तयार पारिदिने ।
- समुदायमा यसबारे एकआपसमा छलफल गर्न, आफ्ना तर्क राख्नको लागि उत्साहित गर्ने । यसरी भएको बुझाई गहिरो हुन्छ र दिगो पनि हुन्छ । समुदायले समस्यालाई महसुस गर्न सकेमा समस्या समाधानको लागि समुदाय स्वयं नै अग्रसर हुनेछन् ।
- सहजकर्ताले कुनै पनि कुराको निर्णय नगरिदिने । बरु, समुदायलाई यसबारे बिचार गर्नका लागि स्थिति तयार पार्ने, आवश्यकतानुसार विभिन्न विधिहरूको प्रयोग गरेर बिचार गर्न सहयोग गर्ने र उनीहरूलाई निर्णय गर्न लगाउने ।

घ. अनुभव सुनाउनुहोस् :

- समुदायलाई अवस्था बुझ्न वा कुनै पनि विषयवस्तुबारे बिचार गर्न वा कुनै पनि कुराको निर्णय गर्नका लागि सहजकर्ताले सहयोग गर्नुपर्ने हुन्छ । सहजकर्ताले विभिन्न समुदायमा काम गर्दा प्राप्त व्यवहारिक अनुभव सुनाउँदा पनि समुदायलाई अवस्थाबारे बुझ्न मद्धत पुग्दछ । यस्ता व्यवहारिक अनुभवहरूले समुदायलाई सजिलोसँग कुरा बुझ्न वा समस्या खुट्याउनका लागि सहयोग पुग्दछ ।
- अनुभव सुनाउँदा मौखिक रुपमा मात्र नभई कहिलेकाहीँ सहभागितामूलक विधिहरूको उपयोग, वा अभिनय विधिको सहयोग पनि लिन सकिन्छ । यसले विशेषगरी निरक्षर समुदायलाई कुरा बुझ्न सजिलो पार्दछ ।
- आफ्नै अनुभव नभए तापनि अरु कसैको अनुभव पनि सुनाउन सकिन्छ । वा, विभिन्न पत्रपत्रिकामा प्रकाशित घटना अध्ययनहरू (केस स्टडीहरू) पनि सुनाउन सकिन्छ ।

ङ. जोस भरिदिनोस् वा जाँगर बढाई दिनुहोस् :

- समुदायको क्षमतालाई आदर गर्नु पर्दछ ।
- समुदायको क्षमता उजागर गर्ने काममा पनि सहजकर्ताले सहयोग गर्नु पर्दछ ।
- समुदायलाई “हामीसँग क्षमता छ । हामीसँग पनि हाम्रो समुदायको विकासको लागि थुप्रै स्रोतहरू छन् । हामी आफै आफ्नो लागि धेरै गर्न सक्छौँ” भन्ने भावना जागृत गराउनु पनि सहजकर्ताको जिम्मेवारी भित्र पर्दछ ।

- विशेषगरी, महिला, बालबालिका, दलित, शारीरिक रुपमा अपांग, आर्थिक रुपमा विपन्न आदि समूहहरू समाजमा तुलनात्मक रुपमा बढी उपेक्षित हुनेहुँदा उनीहरूको क्षमतालाई उजागर गर्ने कार्यमा सहजकर्ताले विशेष ध्यान दिनु पर्दछ ।

च. क्षमता अभिवृद्धि गर्न सहयोग गर्नुहोस् :

- समुदायको विकासको नेतृत्व समुदायले नै लिनु पर्दछ । यसमा दुईमत हुन सक्दैन । तापनि, यसका लागि आवश्यक प्राविधिक तथा व्यवस्थापकीय क्षमता अभिवृद्धिमा समुदायलाई सहजकर्ताहरूले सहयोग गर्नुपर्ने हुन्छ ।
- क्षमता अभिवृद्धिका सम्वन्धमा स्थानीय ज्ञान र सीपको अभिवृद्धि गर्ने कार्यलाई पहिलो प्राथमिकता दिइनु पर्दछ ।

छ. स्थानीय स्रोतको परिचालनमा जोड दिनुहोस् :

- सामुदायिक विकासको लागि बाहिरबाट स्रोत लैजाने भन्दा स्थानीय स्रोत परिचालनमा जोड दिनुपर्छ ।
- यसको लागि समुदायलाई स्थानीय स्रोतको पहिचानको लागि अनुरोध (र आवश्यकतानुसार सहयोग पनि) गर्नुपर्छ ।
- ती स्रोतहरूको सहि उपयोगको लागि सहयोग गर्नुपर्छ ।

ज. छेउमा बसेर हेर्नुहोस् र सिक्नुहोस् :

- सामुदायिक विकास क्षेत्रमा "समुदायलाई केही पनि थाहा हुँदैन, बाहिरका विज्ञ वा संस्थाहरूले उनीहरूलाई सिकाउनु पर्दछ" भन्ने मान्यता पाइन्छ । तर, समुदायको बारेमा समुदायलाई नै बढी थाहा हुन्छ ।
- समुदायको अवस्थाको विश्लेषण गर्ने, समुदायको विकासको लागि सोँच्ने, योजना बनाउने जिम्मेवारी समुदायको नै हुन्छ/हुनुपर्छ । यो समुदायको अधिकार पनि हो र जिम्मेवारी पनि हो । सहजकर्ताले समुदायको यस अधिकारको आदर गर्नुपर्छ ।
- तसर्थ, सहजकर्ताले समुदायबाट स्थानीय ज्ञान, सीप, रहनसहन, संस्कारबारे सिक्नु पर्दछ ।

ञ. नेतृत्व पूर्ण रुपमा समुदायमा हस्तान्तरण गर्नुहोस् :

- प्रारम्भमा सहजकर्ताले समुदायसँगको सहकार्य गर्ने दौरान सक्रियताका साथ लाग्नु पर्ने हुनसक्छ ।

- तर, सहजकर्ता स्थानीय क्षमता अभिवृद्धि गर्दै सामुदायिक विकासको नेतृत्व सकेसम्म छिटो समुदायलाई नै हस्तान्तरण गर्नु पर्दछ ।

ट. सफलता अन्यत्र सुनाउनुहोस् :

- समुदायमा कार्य गर्दा प्राप्त सफलता अन्यत्र सुनाउनुहोस् । यसले समुदायलाई आफ्नो समुदायको लागि कार्य गर्न थप प्रोत्साहित गर्दछ ।
- साथै, समुदायको उक्त सफलताले अन्य समुदायलाई पनि आफ्नो समुदायको विकासको लागि कार्य गर्न प्रोत्साहित गर्दछ ।

## ३.४ सहजकर्ताले ध्यान दिनुपर्ने कुराहरू

कुनै पनि सहभागितामूलक कार्यक्रमलाई सहजीकरण गर्नु अगाडि सहजकर्ताले निम्न कुराहरूलाई ध्यान दिनु पर्दछ :

- कार्यक्रमको उद्देश्य
- कार्यक्रमबाट अपेक्षित परिणाम
- कार्यक्रम प्रक्रिया
- कार्यक्रममा उपस्थित हुने सहभागीहरूको संख्या
- सहभागीहरूबारे जानकारी : शैक्षिक अवस्था, राजनैतिक रुचि, उमेर आदि
- गोष्ठी स्थान : गोष्ठी कक्षाको आकार, अवस्था, सुविधाहरू आदि
- कार्यक्रम आयोजना गर्ने संस्थाबारे जानकारी

समुदायमा सहभागितामूलक अभ्यासलाई सहजीकरण गर्नु अगाडि सहजकर्ताले निम्न जानकारी राख्नु पर्दछ :

- समुदायमा विद्यमान विविधताहरू (सहभागीहरू कुन कुन परिप्रेक्षबाट आएका छन् ?)
- समुदायमा विद्यमान विभेदहरू (यसले को सहजै सहभागी हुन सक्छन् र को सक्दैनन् भन्ने बुझाउँछ)
- समुदायको सामाजिक संरचना (नेतृत्व वर्ग र उपेक्षित वर्गबारे)
- सहजीकरण गर्ने क्रममा आउन सक्ने सम्भावित चुनौतीहरू
- सहभागिताका सम्भावित वाधक तत्वहरू
- सहभागिता बढाउन सक्ने सहयोगी पक्षहरू
- स्थानीय संस्कृति, रितिरिवाज आदि

## ४. सहजीकरण अभ्यासका केही तस्विरहरु



किशोरीहरु आफ्नो अवस्था विश्लेषण गर्दै



महिलाहरु समुदायमा विद्यमान स्रोतबारे छलफल गर्ने क्रममा



बालबालिकाहरु सामाजिक परिवर्तनबारे आफ्नो धारणा चित्रमार्फत व्यक्त गर्दै



साना बालकहरुको सहभागिता



स्रोतको उपयोगबारे छलफल गर्ने क्रममा सहभागीहरु



किशोरीहरु आफ्नो आवश्यकताहरुलाई प्राथमिमिकीकरण गर्दै



स्रोत नक्सांकन - स्रोत विश्लेषणको लागि
एक प्रभावकारी विधि



स्थानीय जनताहरु आफ्ना बिचारहरु
सुन्ने/सुनाउको क्रममा



सहभागिताका - सहजकर्ताको भूमिकाको महत्व



समुदायलाई बिचार गर्ने अवसर दिइनु पर्दछ



हामी पनि सहभागी हुन चाहन्छौं !



महिलाहरुको सहभागिता

## ५. सन्दर्भ सामाग्रीहरु (References)


१. एइची सादामाचु, सामाजिक अभियान या विकास सहायता : गैससको भूमिकामाथि प्रश्न, सन् २००४, काठमाडौ

२. कमल फुयाल, सहभागितामूलक ग्रामीण लेखाजोखा : अवधारणा र अभ्यास, नेपान, सन् १९९७, काठमाडौ

३. कान्तिपुर दैनिक, चैत्र २३, २०६३

४. गोबिन्द न्यौपाने, सामाजिक विकासको विवेचना, सन् १९९९, काठमाडौ

५. प्लान नेपाल, बाल-केन्द्रित सामुदायिक विकास वधारणा गोष्ठी प्रतिवेदन, २०६२

७. Chambers, R., Whose realities counts? Putting the last frist, IT Publications, 1997, London.

८. E. Gustabo, Development, *In* The Development Dictitionary, edited by Wolfgang Sachs, 1997.

९. Hope, A., and Timmel, S. Training for Transformation, MAMBO Press, 1996, Zimbawe.